| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | कविशतक |
| लेखक र प्रकाशक | : | शरदकुमार भट्टराई<br>फोन : ४११००९५ |
| सर्वाधिकार | : | @ लेखकमा सुरक्षित |
| प्रकाशिका | : | इन्दिरा भट्टराई |
| प्रकाशन मिति | : | वि.सं. २०६८ |
| प्रकाशित सङ्ख्या | : | ५०० प्रति |
| मूल्य | : | रु. ५०।– |
| वितरक | : | साझाप्रकाशन<br>पुलचोक, ललितपुर<br>श्रीपशुपतिनाथशरण सहकारी सं.लि.<br>पशुपति, काठमाडौं<br>रत्नपुस्तक भण्डार<br>माइतीघर, थापाथली, काठमाडौं |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एन्.पी.टी.सी. लिमिटेड<br>विमासमिति मार्ग, सरस्वतीनगर<br>फोन नं. ४८११२२६, ४८११३७१ |

# मन्तव्य

शरदकुमार भट्टराईको नयाँ कृति "कविशतक"को एकपटकको आद्योपान्त पाठको आधारमा टिप्पणी गर्न सीमित हुन चाहन्छु । म अक्सर मन्तव्य वा भूमिका लेख्दालेख्दै बहकिन थाल्छु, सन्दर्भमा मात्र अडिग नभएर असान्दर्भिकतिर पनि । शरदकुमार भट्टराईको यो कृतिको चरित्र र स्वभाव यति स्पष्ट र सुग्घर छ कि यहाँ विचलनका लागि कुनै सुविधा छ जस्तो लाग्दैन । काव्यको शास्त्रीय तत्त्व र ढङ्ग अनुशासित दृष्टिकोण हो अनुशासनहीन प्रगल्भता होइन । कवि भट्टराई "कविशतक"मा स्वदेशका केही मूर्धन्य अधिकांश कम मूर्धन्य कविहरूको पावन स्मरण गर्छन् । वस्तुतः यो कविको अघोषित मङ्गलाचरण हो । कविशतकभित्र विगत वर्तमानको स्निग्ध सम्मिश्रण छ जो स्वदेशको काव्यजगत्प्रति अर्पित गरेका भाव र शब्दहरूको हार्दिक प्रक्षेपण हुनपुग्छ । भट्टराईका प्राचीन र अर्वाचीन पात्रहरूमाथि म आफैँलाई कुनै प्रकारको विश्लेषणात्मक विवेचना दिने योग्य ठान्दिन । हाम्रो साहित्यको स्रोत र प्रवाहको गुणधर्म जे छ त्यो छँदै छ । स्वदेशको सिर्जनासंसारप्रति आस्थावान् र आशावान् हुनु एक जीवित कविको पुनीत दायित्व हो भन्ने कतै भट्टराईको प्रच्छन्न सन्देश हो कि ! जस्तो लाग्यो मलाई उनको कविशतक हेर्दा ।

भानुभक्तको माध्यमको सहारा लिएर कवि भट्टराई कल्पित अतीतको काव्यात्मक विलासमा रमाइरहेका हुन्छन् । एक छन्द कविताको हुन्छ । तर समयको पनि एक अज्ञात छन्द हुन्छ, हाम्रो जीवन र जगत्को पनि त्यस्तै भीडले थाहा नपाउने

छन्द हुन्छ। अचेतनतः शरदकुमार भट्टराई भानुको युग र उनको युगबीच लयात्मकता छन्द हराएको धूमिल आभास दिन्छन्। कविशतकको चर्चामा भानुभक्त बढी आकर्षक हुनुको एक कारण हो बाल्यकालदेखि अहिलेसम्म धेरैले सुरिलो स्वरमा उनको रामायण गाएको घनीभूत सम्झना। म पनि भानुरचित सुरिलो रामायणगायनबाट अहिलेसम्म मुग्ध भइरहेको छु। नेपालको सांस्कृतिक इतिहासमा भानुभक्त आचार्य एक महान् विधायक घटना हुन्। नेपाली लोकमानसमा भानुको छवि सर्वाधिक व्यापकतासित जमेको छ। यस अर्थमा मूल्याङ्कन गर्ने हो भने उनी अद्वितीय छन्। तर सार्वभौम सौन्दर्यशास्त्रीय मान्यताको आधारमा मूल्याङ्कन गर्ने हो भने भानुभक्तलाई अवश्य पनि महान् कवि भन्न मिल्दैन। त्यो एक जघन्य दृष्टिदोष हुनेछ। प्रथमतः उनी एक उत्प्रेरित अनुवादक हुन्। जेहोस् शरदकुमार भट्टराई भानुलाई असामान्य तीक्ष्णतासित सम्झेर आफ्नो देशको मृदुल अतीतको एक जीवन्त झझल्को दिन खोजिरहेका छन्। एक स्वस्थ र वन्दनीय स्मृति।

कविहरूलाई कथानक बनाएर एक सिङ्गो कवितासङ्ग्रह योभन्दा पहिले रचिएको तथ्य मलाई थाहा छैन। सायद शरदकुमार भट्टराई नै पहिला कवि हुन्। पहिलेदेखि हाम्रो देशमा चलनमा आएका कविका विभिन्न वर्ग र भेदमाथि शरदले रोचक टिप्पणी गरेका छन्।

अङ्ग्रेजी साहित्यभित्रका महान् कवि स्यामुयल टेलर कोलरिजको सम्झना गर्ने हो भने शरदकुमार भट्टराई केही क्षणहरूका लागि असुविधा अनुभव गर्न सक्छन् या स्पष्ट असहमति देखाउन सक्छन्। कोलरिज भन्छन् – "सजिलैसँग सर्वाङ्ग बुझिने कविता वास्तवमा असली कविताहरू होइनन्।

महान् कविताहरूमा केही अंश सजिलैसित नबुझिने पनि हुनुपर्छ। त्यस्तै कविताहरूले अत्यधिक आनन्द दिन्छन्। सर्वाङ्ग नबुझिने गीत वा कविताहरूमा त्यति धेरै आनन्द आउँदैन। बुझ्ने क्रममा केही श्रम खर्च गर्नुपर्ने हुन्छ।" कोलेरिजको मापदण्डको विपरीत दिशातिर गएको छ भट्टराईको मापदण्ड। भट्टराईका सबै कविताहरू अति नै सरल छन्, स्कुले केटाकेटीहरूले सरलतासित बुझिने खालका छन्। साथै विश्वविद्यालयका प्राध्यापकहरूले पनि समीक्षापूर्ण दृष्टिले ध्यान दिने खालका पनि छन्। धेरै शताब्दी पहिले विश्वनाथले भनेको "काव्यं रसात्मकं वाक्यम्" को याद आइरहेको छ अहिले। जुन कविताले पाठकहरूको हृदयलाई स्पर्श गर्नसक्यो त्यही यथार्थतः कविता हो। हाम्रो देशका सौन्दर्य र काव्यात्मक परिवेशभित्र शरदकुमार भट्टराईको "कविशतक" ले धेरै पाठकहरूको हृदयलाई मुग्ध गर्नेछ भन्ने मेरो विश्वास छ। भट्टराईको प्रस्तुत कविशतकले सरल भाव र सरल शब्दहरूले व्यञ्जनाको समेत प्रतिनिधित्व गर्छन्। सरलता, समसामयिकता र माङ्गलिक दृष्टिकोण यस शतकका विशेषताहरू हुन्।

भानुभक्तदेखि लिएर अहिलेसम्मका केही छानिएका १०० जना विविध विधाका प्रतिनिधि कविहरूको सङ्क्षिप्त परिचय आकर्षकरूपमा वसन्ततिलका छन्दमा लेखिएको एक एक कविताबाट भट्टराईजीले दिनुभएको छ। जसले पायो उसले यसो गर्न सक्तैन। यो कविशतक सङ्ग्रहणीय र पठनीय छ। यस्तो पवित्र काममा कविको कलम चलिरहोस्। शुभकामना छ। कविशतकका लागि म बधाई दिन चाहन्छु कवि शरदकुमार भट्टराईलाई।

२०६१।८।२९ प्रा.डा. दुर्गाप्रसाद भण्डारी

# कविशतकका बारेमा

रानीपोखरी संस्कृत प्रधान पाठशालामा अध्ययन गर्ने वेलादेखि अर्थात् दुई हजार तेह्र सालदेखिका मित्र हुन् शरदकुमार भट्टराई। अरूहरू धेरै मित्र भए पनि अझसम्म सम्झनामा रहेका र त्यसबेला निकै घनिष्ट उनीजस्तै अर्का भट्टराई पुरुषोत्तम र बुद्धिनाथ पनि थिए। बुद्धिनाथको घर थाहा भएन र उनी त्यसपछि कहाँ गए त्यो पनि थाहा भएन। पुरुषोत्तम, शरद र म भने सँगै पढी शास्त्री सकेर शाखा अधिकृतमा सँगै जागिर पनि खायौँ। म बीचमै जागिर छुटेर ट्रक ढुवानी र व्यापारपट्टि लागेँ। म पहिलेदेखि नै कविता लेखिटोपल्थेँ र यसको निरन्तरता रहिरह्यो। अनि एकचालीस साल चैत्र महिनामा लेखनाथ–शतवार्षिकीको उपलक्ष्यमा साहित्यिक पत्रकार सङ्घद्वारा आयोजित कविता यात्रामा अचानक पाल्पा जाँदा त्यहाँका प्रमुख जिल्ला अधिकारीको रूपमा शरदकुमार भट्टराईजीलाई भेटियो। मित्र भए पनि पञ्चायतकालका प्रमुख जिल्ला अधिकारी हुनाले उनको साहित्यिक क्षेत्रसँग के रुचि होला ? भन्ने मनमा अवधारणा राखियो। यसको कारण प्रायः साहित्यकारहरूले तत्कालीन समयसँग विद्रोह गर्ने नै अवस्था थियो र आजसम्म त्यो प्रवृत्ति वदलिन सकेको छैन। जागिरे शरदजीले आफ्नो जागिरे प्रवृत्ति नै राख्नुहोला भन्ने मेरो सारा धारणालाई उहाँले चकनाचूर मात्रै पार्नुभएन बरु उल्टै हामीलाई राम्रो स्वागतका साथ चिया चमेना गराएर गोष्ठीमा पूर्णकाल भाग लिएर र आफूले पनि कविता सुनाएर अश्चर्यचकित नै बनाइदिनु भयो। अझ त्यति मात्रै नभएर शरदजीले अर्को दिन तानसेन दरबारको अत्यन्त

महनीय तथा ऐतिहासिक राष्ट्रनिर्माता श्री ५ पृथ्वीनारायण शाहको गद्दीबैठकमा अर्थात् जुन दरबारमा जिल्ला प्रशासन कार्यालय समेत थियो, त्यसै दरबारको उक्त गद्दीबैठकमा बोलाएर तत्कालीन पञ्चायती सरकारले पक्राउपुर्जी जारी गरेका केही क्रान्तिकारी कविहरूलाई समेत निर्भीकरूपमा सम्मिलित गराएर कविसम्मेलन समेत गराउनुभएको थियो। त्यसलाई मैलै त्यस बेलाको राजनीतिक परिस्थितिमा अत्यन्त साहसिक काम उहाँले गर्नुभएको ठानेको थिएँ। यसअघि शरद भट्टराईजी कविता पनि लेख्नुहुन्छ भन्ने मलाई थाहा थिएन।

जागिर खाएर पनि स्वच्छ छवि, स्वतन्त्र विचार र निष्पक्ष व्यवहार गर्ने स्वभावलाई उहाँले छोड्नुभएन। उहाँ पदोन्नतिमाथि पदोन्नति हुँदै सचिवस्तरसम्म पुग्नुभयो तर कहिल्यै पनि घमण्ड गरेको मैले थाहा पाइन। मसित सधैँ उही छात्रजीवनको सख्यभावलाई उहाँले निर्वहन गरिरहनु भयो। आफूले सकेसम्म उपकार गर्ने प्रवृत्ति पनि उहाँमा थियो। कतिपय समयमा विभिन्न लेखकहरूका पुस्तकहरू सहयोगमा प्रकाशित गरिदिने सिलसिलामा पनि म याचक भएर उहाँकहाँ पुगेँ र एकै याचनामा हातमा केही लिएरै फर्कें। यी सब गुणहरू बाहेक रचनाधर्मितालाई पनि उहाँले छोड्नुभएन र केही न केही लेखिरहनुभयो। यसरी उहाँले नेपाली साहित्यलाई निकै गुन लगाउनुभएको छ। यस क्रममा उहाँका एकदर्जनभन्दा बढी विभिन्न विधाका पुस्तकहरू प्रकाशन भइसकेका छन् र अहिले यो नवीनतम कृति 'कविशतक' पाठकसामु आउँदै छ।

भट्टराईजीको विशेषता हो दृढ राष्ट्रवाद, स्पष्टवादिता, प्रसादगुणले युक्त काव्यकृतिहरू लेख्नु, आफ्नो जातीयता, धर्म

र संस्कृतिप्रतिको प्रगाढ प्रेम र चारित्रिक स्वच्छतामा जोड दिनु । उहाँ जीवनका निमित्त लेख्नुहुन्छ तर नारावाजी गर्नुहुन्न । काव्यले वर्तमानसँग विद्रोह गरेर मात्र हुँदैन । यसलाई सही बाटोमा ल्याउने निर्देशन पनि कविले दिनुपर्छ । यसैकारण उहाँ मार्गनिर्देशन पनि गर्नुहुन्छ । उहाँको आँखामा कुनै व्यक्तिविशेषप्रति विद्वेष छैन, विद्वेष छ खराव प्रवृत्तिसित ।

यस 'कविशतक'मा १०० जना कविहरूमा आदिकवि भानुभक्तदेखि लिएर आधुनिक प्रतिनिधि कविहरूसमेत समाविष्ट भएका छन् । भट्टराईजीले वसन्ततिलका छन्दमा एउटा एउटा कविताद्वारा प्रत्येक कविको परिचय दिनुभएको छ । अत्यन्त सङ्क्षिप्त तर आकर्षक शैलीमा कविहरूको वर्णन गरेर उहाँले आफ्ना अग्रज र समकालीन कविहरूप्रति आफ्नो श्रद्धा तथा कृतज्ञता व्यक्त गर्नुभएको छ । उहाँले प्रत्येक कविका बारेमा अत्यन्त सटीक र यथार्थ वर्णन गर्ने प्रयास गर्नुभएको छ । कसैसँग आग्रह तथा पूर्वाग्रह नराखी अत्यन्त स्वच्छरूपमा सबैको यथार्थ विवरण थोरै शब्दमा दिनसक्नु कवि भट्टराईको विशेषता देखिएको छ । यसलाई कविहरूको कोष नै भने पनि अत्युक्ति हुने म ठान्दिन । प्रत्येक कविको कालक्रम मिलाएर लेखिएको यो 'कविशतक' कविहरू र साहित्यप्रेमीहरूका लागिसमेत प्रेरणादायी र सङ्ग्रहणीय हुनेछ भन्ने मैले विश्वास लिएको छु । यसप्रकारको अत्यन्त सौष्ठव शैलीमा कविता लेख्नसक्ने कविले 'कविशतक'का ठाउँमा 'कविसहस्रनाम' लेखेर १००० जना कविहरूको वर्णन गरेको भए अझै राम्रो हुन्थ्यो कि भन्ने मलाई लागेको छ ।

शैलीको दृष्टिले पनि उहाँको शैली अत्यन्त आकर्षक, अभिधाप्रधान र प्रसादगुणले परिपूर्ण छ । सामान्य पाठकले

पनि बुझ्न सक्ने र हृदयलाई छुन सक्नेगरी लेख्नु सफल कविको परिचय हो । वार्णिक छन्दलाई आत्मसात् गरेर लेखे तापनि उहाँका कवितामा दूरान्वय कतै गर्नुपर्दैन । छन्दको कुरा उठ्दा केही भन्नुपर्ने हुन्छ । हामी केही साथीहरूले उन्नयन प्रकाशनको माध्यमबाट वर्तमान युगमा छन्दमा लेख्नेहरूलाई भावको गहिराइमा अझै बढी सचेत हुन, छन्दलाई निर्दोष, भाषालाई शुद्ध प्रयोग गर्न सचेत बनाउन र गद्य कविता लेख्नेलाई छन्दको माधुर्यको आकर्षण दिन अन्तर्क्रियात्मक विशेष कविगोष्ठीहरू वेलावेलामा गर्ने गर्दछौँ । यसलाई कोठे कविगोष्ठी वा अझ छोटकरीमा को.क.गोष्ठी पनि भन्दछौँ । यस 'कविशतक'मा पनि कविगोष्ठीकी एक प्रमुख पात्र ओमी शर्माको वर्णनमा त्यही कुरा उल्लेख भएको छ । यस्ता गोष्ठीहरूमा भट्टराईजी पनि विशेष तातोलगाउनेहरूमा पर्नुहुन्छ । छन्द भनेपछि उहाँ मरिमेट्नु हुन्छ । हुनपनि संस्कृतका प्रत्येक छन्दलाई आत्मसात् गरेर प्रयोग गरिरहेको विश्वकै एकमात्र भाषा नेपाली हो र यसमा हामीहरूले गर्व गर्नुपर्दछ । यसै मणिमालामा एउटा मणिका रूपमा यो 'कविशतक' अनुस्यूत हुन आएको छ । निश्चय पनि कविताका पारखीहरूका आँखामा यो 'कविशतक' आह्लादकारी हुनेछ भन्ने म आशा गर्दछु ।

२०६१ साल विजयादशमी — रमेश खकुरेल

# बधाई

साहित्यकार शतका शुभकर्मलाई
तीखो सफा कलमले बहुतै सजाई ।
खेली वसन्ततिलकासित काव्यकेलि
बुन्छन् यहाँ शरद शाब्दिक नागबेली ॥१॥

सम्झेर भानु पहिले सुरुवात गर्दै
श्रीरामको स्मरणमा निज चित्त धर्दै ।
दौड्यो जहाँ कलम काव्य नयाँ बनाई
नौलो विधा शरदको कविकर्म पाई ॥२॥

वक्रोक्तिसाथ सहजोक्तिकला खुलेको
रङ्गीन फूल सय वाग नयाँ झुलेको ।
साहित्यको शरद सुन्दर वाटिका यो
हेर्दा विशिष्टपनको नव सिर्जना यो ॥३॥

सङ्क्षिप्तमा पनि दिए हुलिया खुलाई
सानो र सुन्दर कलात्मक यो बनाई ।
लेख्नेहरू अझ अरू पनि जम्जमाऊन्
साहित्यकार शुभनाम नयाँ कमाऊन् ॥४॥

सङ्क्षिप्त शब्द तर भाव असीम पारी
जोड्यौ जहाँ कलमको प्रिय फूलबारी ।
सारांश सार्थक टिपी कवि मर्मलाई
लेख्यौ नवीन कृति दिन्छु म यो बधाई ॥५॥

२०६८ जेठ २८

प्रह्लाद पोखरेल

# आफ्नै बारेमा

मैले २०६० सालतिर नेपाली भाषामा आदिकवि भानुभक्तदेखि लिएर आधुनिक समयकी कवयित्री ओमी शर्मासम्मका केही प्रतिनिधि कविहरूलाई छानेर मैले प्रत्येक कविका बारेमा वसन्त तिलका छन्दका एक एक श्लोकद्वारा वर्णन गरेर उहाँहरूप्रति आफ्नू श्रद्धा व्यक्त गर्ने प्रयास गरेको थिएँ । यसका साथै त्यस समयका सन्दर्भमा मिल्ने गरी मैले लेखेका केही छन्दोबद्ध कविताहरूसमेत समावेश गरेर 'कवि र कविता' नाम राखेर कवितासङ्ग्रहको पाण्डुलिपि तयार गरेर मन्तव्यका लागि प्रा.डा. दुर्गाप्रसाद भण्डारीज्यू र श्रीरमेश खकुरेलज्यूसमक्ष पठाएको थिएँ । उहाँहरू दुवैजनाले अत्यन्त सदाशयताका साथ स्नेहाभिषिक्त मन्तव्य २०६१ सालमा नै दिनुभएको थियो ।

त्यसरी सबै कुरा पूर्ण भइसकेर पनि मैले लेखेका केही कविताहरू बिस्तारै असान्दर्भिक जस्ता भएका मैले महसूस गरेँ र यसको प्रकाशनमा शिथिलता आयो । शिथिलतामात्रै नआएर यो दराजका कुनामा लुकेर बस्यो । एकदिन दराज खोलेर मेरा पूराना थन्किएर बसेका लेखहरू खोज्ने सन्दर्भमा यस सङ्ग्रहलाई पनि मैले देखेँ । त्यो देखेर म आफैँ लज्जित भएँ । कविहरूका बारेमा लेखिएका कविताहरू र अरू सबै फुटकर कविताहरूको पर्यालोचन गरेपछि मात्रै प्रकाशन गर्नेतर्फ विचार गरिनेछ । यसपटक चाहिँ केवल कविहरूका बारेमा लेखिएका १०० कविताहरू 'कविशतक' नाम दिएर प्रकाशन गर्ने निर्णय गरेँ ।

कविशतक नामकरण गरेपछि त्यसमा परेका कविहरूका बारेमा समयक्रम मिलाएर कविताहरू राख्नु राम्रो हुने ठानें। त्यसरी मिलाउन लाग्दा त्यसबेला कोठे कविगोष्ठी र बाहिरका कविसम्मेलनहरू समेतमा भाग लिँदा सँगै रहेका केही कविहरू अहिले यस संसारबाट विदा भइसकेका मैले पाएँ। मलाई साह्रै विरक्त लाग्यो। 'कालो हि दुरतिक्रमः' काललाई कसैले टार्न सक्तैन। संसार यस्तै हो। ब्रह्मलीन कविहरूलाई म श्रद्धाञ्जलि अर्पण गर्दछु। किन्तु २०६० सालमा वर्तमान ठानेर वयान गरिएका कविहरूलाई अतीतका भनेर अहिले लेख्नुपर्दा मलाई अत्यन्त कष्ट भयो। अझ त्यसमा पनि कालक्रमले अर्थात् यसमा परेका जेष्ठ कवि शुरुमा आदिकवि भानुभक्त र कान्छी कवयित्री ओमी शर्मा हुन्, तर तिनै सबैभन्दा कान्छी युवा कवयित्री गत वर्ष हामीहरूबाट छुट्टिएर टाढा भइन्। यसबाट हामीहरू मर्माहत भएका छौं।

यस शतकमा आफ्नू अमूल्य विद्वत्तापूर्ण आशीर्वचन लेखेर दिनुहुने आदरणीय प्रा.डा. दुर्गाप्रसाद भण्डारीज्यूमा आशीर्वचनका लागि म हार्दिक कृतज्ञता प्रकट गर्दछु।

अर्का मेरा २०१३ सालदेखिका सहाध्यायी साथी श्रीरमेश खकुरेलज्यूलाई त म खै कुन शब्दले कृतज्ञता व्यक्त गरौं ? मैले शब्द नै भेटिन। किनभने मैले झण्डै बिर्सिसकेको २०१३ सालको विद्यार्थी अवस्थाको कुरा, रङ्गमहलमा जागिर खाने सन्दर्भमा तालीम लिँदाका कुरा, २०४१ चैत्रमा पाल्पा जिल्लाको तानसेनमा भएको कविसम्मेलनको कुरा, कोठे कविगोष्ठीका कुराहरूका साथै अन्य सन्दर्भहरू समेत हालेर मलाई जुन स्नेह र सद्भावले आप्लावित गरिदिनु भयो। यसका लागि म उहाँलाई हार्दिक धन्यवाद दिन्छु। कवितात्मक मन्तव्यका

लागि युवाकवि श्रीप्रह्लाद पोखरेलज्यूलाई म धन्यवाद व्यक्त गर्दछु ।

दुर्गा प्रसन्न अति भै मृदुभाव राखी
मन्तव्य जो प्रकट भो कटुता नराखी ।
साह्रै अकिञ्चन थिएँ शुभदृष्टि पाएँ
सत्प्रेरणा प्रकट भो अति नै रमाएँ ॥

पढ्थ्यौँ सँगै अघि सुसंस्कृत निर्विशेष
जागीरमा पनि सँगै हुन गो प्रवेश ।
सम्झाउँदै विगत दृष्टि दियौ विशेष
साह्रै कृतार्थ म भएँ यसले रमेश ॥

प्रह्लादले शतकको मधुछन्दलाई
रोजेर नै सरस यो कविता बनाई ।
मन्तव्यमा जुन दिए शुभ यो बधाई
साह्रै प्रफुल्लित गरे उनले मलाई ॥

नाना विशेषण र सुन्दर भाव साथ
मन्तव्य जो प्रकट भो म भएँ कृतार्थ ।
सुन्दैछ यो अघि बसी कविको समाज
होला कहाँ वहन यो अति मान्छु लाज ॥

अन्त्यमा कम्प्युटर टाइप गर्ने श्रीखड्गप्रसाद खनाललाई पनि धन्यवाद दिन्छु । धन्यवाद ।

२०६८ पुत्रदा एकादशी

विनीत

# कविशतक

सारा ब्रह्माण्ड जल्ले सृजन पनि गरी पाल्छ अल्छी नमानी ।
आफैँ नै फेरि जस्मा सहजसँग पसी बस्छ आत्मीय ठानी ॥
यो सारा खेल ठानी त्रिभुवन सजिलै गर्छ जल्ले तमाम ।
नित्यानन्दी जयश्री त्रिभुवन कविमा नित्य लागोस् प्रणाम ॥



श्री *भानु* आदिकवि हुन् अनि रामभक्त ।
श्रीरामकै विषयमा मन दी सशक्त ॥
लेखेर राम कविता रविझैँ उदाए ।
भाषा समुन्नत भयो जनता रमाए ॥

(१)

साहित्यका रसिक साधक ती बनेर ।
लेखे सुरम्य कविता अनि काव्य धेर ॥
ल्याए क्रमैसित उँभो कवि भानुलाई ।
*मोती* युवाकवि भए नवशक्ति पाई ॥

(२)

साहित्यभूषण भए *कुलचन्द्र* पैले ।
लेखे सुसंस्कृत सुकाव्यहरू क्रमैले ॥
लेखे स्वलङ्करण चन्द्र र राघवादि ।
सद्भक्तिमा रत थिए नबनी प्रमादी ॥
(३)

ठूला थिए कविशिरोमणि *लेखनाथ* ।
लेखे नवीन तपसी नवदृष्टिसाथ ॥
लालित्य सत्यकलि बुद्धिविनोद लेखे ।
ती हुन् युगान्त कवि सौम्य भविष्य देखे ॥
(४)

विद्वान् थिए प्रखर पण्डित *सोमनाथ* ।
लेख्थे सुरम्य कविता अति भक्तिसाथ ॥
साहित्य दर्शन थिए उनमा विशिष्ट ।
आदर्श राघव भयो उनबाट सृष्ट ॥
(५)

लेखे विभिन्न कविता अनि काव्य धेर ।
पुष्पाञ्जली पनि दिए विरही बनेर ॥
ज्ञानी गुणी कवि थिए उपकार गर्थे ।
*प्रेमप्रसाद* सबमा शुभ भाव छर्थे ॥
(६)

नेपाल निम्ति बलिदान सदैव गर्ने ।
टाढा बसेर *धरणी* तिर नित्य हेर्ने ॥
नैवेद्य अर्पण गरी यस राष्ट्रलाई ।
जल्ले दियो सबल शक्ति सबै जुटाई ॥
(७)

हुन् *बालकृष्ण* कवि नाटकतर्फ नेता ।
हुन् दक्ष मञ्चनकला र कला प्रणेता ॥
चूल्हो चिसोसँग दिए नव नाट्य धेर ।
देदीप्यमान अझ छन् रविझैँ बनेर ॥
(८)

खोजी गरी अघि सरीकन भानुलाई ।
ल्याए अगाडि कविले अति नै रमाई ॥
भन्थे चिकित्सक सबै *नरनाथ* लाई ।
हुन् वैद्यराज कविराज दुवै मिलाई ॥
(९)

विद्वान् विचक्षण थिए मनका नियोगी ।
ती हुन् विशिष्ट कवि कर्मठ कर्मयोगी ॥
*योगी* भएर पनि नित्य गरेर काम ।
नेपाल निम्ति जसको वय भो तमाम ॥
(१०)

*लक्ष्मी* महाकवि थिए अति शक्तिशाली ।
ल्याए उँभो सकल काव्यविधा उचाली ॥
सारै थिए कुशल जे पनि लेख्न सक्थे ।
साहित्यसाधक महान् सब देख्न सक्थे ॥
(११)

जीवन्त नाटक र काव्य कथा कहानी ।
विस्फोट तर्पण दिए कविधर्म जानी ॥
आए उनी गहन रात समस्त फारी ।
साहित्यका अमर साधक हुन् *तिवारी* ॥
(१२)

जन्मेर दूर तर दुस्तर काव्य लेख्ने ।
नेपाल सुन्दर समुन्नत नित्य देख्ने ॥
ती पुत्र हुन् प्रकृतिका अति सौम्य राम्रा ।
संसिद्धिका चरण हुन् कवि *सिद्धि* हाम्रा ॥
(१३)

सिद्धान्तमा विविध पत्र र काव्य लेख्ने ।
साहित्यमा सकल सुन्दर सौम्य देख्ने ॥
सोझा सुधा ऋषभ हुन् तर रूप नाना ।
ती पत्रकार कवि लेखक हुन् पुराना ॥
(१४)

विद्वान् थिए गणित जोतिषका प्रणेता ।
ती राष्ट्रभक्त कवि हुन् इतिहासवेत्ता ॥
जे लेख्तथे अति विचार गरेर मात्र ।
लेख्थे सदैव ***नयराज*** भई सुपात्र ॥
(१५)

अत्यन्त भावुक भई कविता कहानी ।
लेख्ने सधैँ गहन चिन्तक हुन् भवानी ॥
ती प्राज्ञ हुन् रसिक हुन् कवि सिद्धहस्त ।
ती *भिक्षु* हुन् तर दिए उनले प्रशस्त ॥
(१६)

अत्यन्त जोश अनि होश दुवै लिएर ।
लेख्थे युगान्त कविता हृदयै दिएर ॥
मन्त्री भए *व्यथित* निर्भय साथ फेरि ।
हिँड्थे उनी समयको सब चाल हेरी ॥
(१७)

साहित्यका विविध रम्य विधा समाती ।
मूर्धन्य लेखक बनेर रहे सदा ती ॥
हुन् क्रान्तिदूत जननायक तापहारी ।
*विश्वेश्वरै* सुजनका जनका छहारी ॥
(१८)

पैले थिए गुरु यिनी अति तीक्ष्ण वक्ता ।
ती हास्यका पनि थिए पहिला प्रवक्ता ॥
ती व्यङ्ग्यकार कवि *वासु* समग्र लेख्थे ।
ती भूतका स्वजन रे परसम्म देख्थे ॥
(१९)

हुन् क्रान्तिवाहक उनी सहसा उदाए ।
झिल्का छरी चहक दी अति झिल्मिलाए ॥
बाँडेर सौम्य सपना जनता जगाए ।
*गोपाल* याम नहुँदै सहसा हराए ॥
(२०)

विद्वान् थिए प्रिय थिए कविरत्न बेश ।
लेखे चरित्र अवधूत नरेश देश ॥
ती *कृष्ण* हुन् अथक सिर्जन गर्न सक्ने ।
सीमाविहीन कवि हुन् अघि सर्न सक्ने ॥
(२१)

हुन् छन्दका कुशल नायक दिव्य एक ।
गौरी दिए सरस काव्य दिए अनेक ॥
राजेश्वरी पनि दिए अझ काव्य लेख्छन् ।
जीवन्त *माधव* उनी सब सौम्य देख्छन् ॥
(२२)

सङ्क्रान्तिवाहक सुधारक शब्दकार ।
नेता विचारक र लेखक पत्रकार ॥
व्यङ्ग्योक्तिका अमर लेखक शक्तिशाली ।
साहित्यका सफल नायक हुन् *पिँडाली* ॥
(२३)

जैले थियो निविड बादल चेतनामा ।
झुल्किन् सुदीप्त रविझैँ परका कुनामा ॥
फारेर बादल दिइन् नव प्रेम धारा ।
*राजेश्वरी* प्रिय बनिन् कविकी सितारा ॥
(२४)

खोजेर बिम्ब अति धूमिल रातभित्र ।
हिँड्थे बनी तरल दिव्य लिएर चित्र ॥
बढ्थे सधैँ सबल भै नबनी प्रमादी ।
ती हुन् *फणीन्द्र* कवि दुर्जय कर्मवादी ॥
(२५)

उत्साह जाँगर थियो अनि जोश धेर ।
लेख्थे सदैव *हरि* काव्य युवा बनेर ॥
लेखे विभिन्न कविता अनि काव्य आदि ।
सेवा गरे गुरु भई नबनी प्रमादी ॥
(२६)

यी गाउँछन् सरस सुन्दर भावसाथ ।
यीबाट लोकलय बन्न गयो सनाथ ॥
यी हुन् समर्पित सधैँ कवि *धर्मराज* ।
गर्ने भलो सकलको यिनको छ काज ॥
(२७)

हाँसो र आँसुसँग नित्य मिलेर खेली ।
साहित्य साधक बने सुखदुःख झेली ॥
दिन्छन् जलेर पनि नित्य उनी प्रकाश ।
हुन् नाट्यमूर्ति कवि ***वैष्णव*** काव्यदास ॥
(२८)

साहित्यसाधक र चिन्तक नाट्यकार ।
हुन् ऋद्धिपुत्र कवि सुन्दर काव्यकार ॥
ती प्राज्ञ हुन् अघि गरे शुभकाम धेर ।
बाँच्लान् सधैँ ***विजय*** कालजयी बनेर ॥
(२९)

हुन् ***मन्थलीय*** कवि उद्भट काव्यकार ।
साह्रै सुसंस्कृत थियो उनको विचार ॥
लेखे असङ्ख्य कविता अनि काव्य धेर ।
चाँडै गए भरत निठुर कालनेर ॥
(३०)

नेपालका प्रमुख ती कविभित्र पर्थे ।
अत्यन्त शान्त मनले सब काम गर्थे ॥
लेखेर गद्य कविता नव भावसाथ ।
ऐले छ ***मोहन*** विधा बहुतै सनाथ ॥
(३१)

***श्रीभद्र*** भद्र अति हुन् अनि राजनेता ।
साहित्यकार पनि हुन् मनका विजेता ॥
यी निस्किए जयतु संस्कृतबाट पैले ।
यी फैलिँदै पछि गए जनमा क्रमैले ॥
(३२)

यी कोषकार कवि लेखक हुन् ***वसन्त*** ।
ऊर्जा छ भित्र यिनको अति नै दुरन्त ॥
जस्तै भए पनि सधैँभरि माथि ताक्ने ।
भाषा समुन्नत गरेर उनी नथाक्ने ॥
(३३)

ती लेख्तथे सरल सौम्य कथा कहानी ।
ती बोल्दथे मृदु भई अति चाख मानी ॥
ती प्राज्ञ भैकन रहे कति वर्षसम्म ।
चाँडै गए ***विकल*** लाग्छ निकै अचम्म ॥
(३४)

सीमा तरी पर गए पनि राष्ट्रवाद ।
घन्काउँथे ***अगम*** दुर्दम शङ्खनाद ॥
बोल्थ्यो कवित्वसँग धड्कन बारबार ।
गर्थे प्रचण्ड जनजागृतिको प्रसार ॥
(३५)

नेता थिए अघि उनी अति नम्र शिष्ट ।
सेवा गरे सकलको न बनी विशिष्ट ॥
साहित्य संस्कृति र धर्मसँगै अनेक ।
गर्थे विभिन्न रचना ***कुलचन्द्र*** एक ॥
(३६)

दोभान गुन्द्रुकसँगै रमु चन्द्रहास ।
लेखे मनस्थिति दिनेश नभै हताश ॥
लेख्थे सधैँ ***भरत*** भावुक भै असाध्य ।
दुःखान्त जीवन थियो अति कष्टसाध्य ॥
(३७)

देखिन्न धेर कविता तर लेख लेख्छन् ।
उत्फुल्ल छन् ***कमल*** ती परसम्म देख्छन् ॥
सग्लो छ अक्षर उखान र थाह छैन ।
गीता बुकी सिरप नून नभै हुँदैन ॥
(३८)

साहित्यतर्फ अति सुन्दर काव्य लेख्थे ।
पाखेहरू सकल उच्च भनेर देख्थे ॥
***प्यासी*** थिए सकलका प्रिय वाक्य बोल्थे ।
बोल्ने कला नव थियो मधुबिन्दु घोल्थे ॥
(३९)

अत्यन्त नै प्रखर दुर्जय शक्तिशाली ।
गर्थे सुरम्य रचना स्मृतिमा बसाली ॥
भाषा बहुज्ञ अनि शिक्षक एक तारा ।
ती ***हेमचन्द्र*** कवि हुन् सबका पियारा ॥
(४०)

ठूला प्रशासक भए परसम्म देख्ने ।
साहित्यमा रुचि छ काम छ नित्य लेख्ने ॥
लेख्छन् कथा विशद यी इतिहास जानी ।
दुःखी भए पनि छ ***सुन्दर*** सौम्य बानी ॥
(४१)

ती भक्तिले भजन उन्नत गीत लेख्थे ।
ती व्यङ्ग्यमिश्रित गरीकन हास्य लेख्थे ॥
ती फूर्तिला चतुर भै शुभ कर्म गर्थे ।
ती रामका अनुज ***लक्ष्मण*** भित्र पर्थे ॥
(४२)

हुन् साहसी कवि सबैसँग भिड्न सक्ने ।
*यात्री* अगम्य पथमा पनि हिँड्न सक्ने ।
ऊर्जा अदम्य छ सधैँ बहने अजस्र ।
छन् धेर काव्य कविता रचना सहस्र ॥
(४३)

लेख्थे सशक्त कविता अगुवा बनेर ।
दिन्थे उदाहरण बिम्ब सशक्त धेर ॥
ती हुन् नवीन युगका नवकाव्यधारी ।
*भूपी* सशक्त कवि हुन् कविका छहारी ॥
(४४)

धेरै अगाडि उनले कविता र गाना ।
लेख्ने गरे मधुर भाव भरेर नाना ॥
लेख्छन् अझै पनि लिई शुभ सद्विचार ।
ती हुन् प्रसिद्ध कवि *नन्दन* गीतकार ॥
(४५)

सङ्घर्षशील *हरिभक्त* नभै प्रमादी ।
लेख्थे सुरम्य कविता अनि गीत आदि ॥
टाढा प्रवासतिरबाट उनी उदाए ।
आभा दिएर झरिलो सहसा बिलाए ॥
(४६)

दुर्दम्य छन् चतुर छन् सब सोच्न सक्छन् ।
गर्छन् सुरम्य रचना अति घोच्न सक्छन् ॥
*दुर्गा* छ नाम उनको अति फुर्तिला छन् ।
अत्यन्त नै रसिक छन् र सधैँ खुला छन् ॥
(४७)

सामान्य छन् सहज छन् अनि बुद्धिवादी ।
सिद्धान्तमा अडिग छन् अति वामवादी ॥
यी हुन् सदैव निमुखा जनतर्फ लाग्ने ।
*आनन्ददेव* कवि हुन् हक नित्य माग्ने ॥
(४८)

देखिन्छ सुन्दर पराशरसृष्टियोग ।
ढुङ्गो टुसाउँछ र पाउँछ दृष्टियोग ॥
मृत्युञ्जयीसरह निर्भय लेख्न सक्छन् ।
यी *भानुभक्त* कवि सुन्दर देख्न सक्छन् ॥
(४९)

ती व्यङ्ग्यकार कवि लेखक हास्यकार ।
अत्यन्त सुन्दर थियो उनको विचार ॥
ती शान्त *भैरव* थिए व्यवहार राम्रो ।
दुर्भाग्य अन्त्य हुन गो बहुतै नराम्रो ॥
(५०)

जे लेख्तछन् सकल दर्शनमात्र लेख्छन् ।
सर्वत्र चिन्मय परात्पर एक देख्छन् ॥
सत्कार्यमा छ मन चिन्तन नित्य गर्छन् ।
ज्ञानी गुणी *शिव* सदैव प्रकाश छर्छन् ॥
(५१)

शास्त्रीय सौष्ठव विधातिर छन् विरक्त ।
आयाम काव्यतिर *ईश्वर* हुन् सशक्त ॥
दुर्बोध्य लेख रचना उनका प्रसस्त ।
चाँडै गए भुवनबाट भएर अस्त ॥
(५२)

यी बोल्नमा कुशल छन् मनभित्र छुन्छन् ।
भाषा बहुज्ञ कवि हुन् सब विश्व घुम्छन् ॥
हुन् सन्त चिन्तन विशाल छ काव्य लेख्छन् ।
यी *खेमराज* जगतै सब कृष्ण देख्छन् ॥
(५३)

अत्यन्त भावुक थिए कवि नाट्यकार ।
सारै समुन्नत थियो उनको विचार ॥
शैली थियो सरल छन्दविहीन रम्य ।
ती *वासु* हुन् कवि थिए अति शान्त सौम्य ॥
(५४)

यी छन्दमा कुशल छन् चतुरा भला छन् ।
छर्छन् सुवास रचनासित साखिला छन् ॥
हुन् भावका कवि सदैव अगाडि लाग्छन् ।
देख्छन् अभाव अनि *कञ्चन* दूर भाग्छन् ॥
(५५)

सर्कारमा पनि रहेर गरेर काज ।
सेवा समाप्तिपछि सम्प्रति *हेमराज* ॥
सत्कार्यमा मन दिएर गरी प्रसार ।
लेख्छन् किताब अनि लेखहरू हजार ॥
(५६)

सम्मान भेषज समान छ काव्य लेख्छन् ।
पासाङ या झपट हुन् सब रम्य देख्छन् ॥
देख्ता सुधा सरल छन् तर चुस्त यी छन् ।
बोल्छन् असाध्य कम *ओम* दुरुस्त यी छन् ॥
(५७)

हुन् राष्ट्रसेवक प्रशंसित गीतकार
व्यङ्ग्योक्तिमिश्रित कला यिनमा अपार ॥
*कालीप्रसाद* कवि हुन् अति भाग्यशाली ।
लेख्छन् सुरम्य कविता नवभाव हाली ॥
(५८)

सङ्घर्षशील कवि हुन् जनका पुजारी ।
यी झुल्किए प्रथम गद्यविधा उघारी ॥
आयामतर्फ अगुवा पहिले थिए यी ।
हुन् *काइँला* सकलका प्रिय छन् सधैँ यी ॥
(५९)

यी लम्जुङे कवि कलात्मक काव्य लेख्छन् ।
शास्त्रीय छन्दसित सुन्दर भाव पोख्छन् ॥
छन् ग्राह्य रम्य रचना उनका तमाम ।
हो *मेदिनी* सरल *सुन्दर* सौम्य नाम ॥
(६०)

सामान्य छन् सरल छन् छ अहं अभाव ।
लेख्छन् सुरम्य कविता विनुभेदभाव ॥
विद्वान् *बहादुर* र वारिधियुक्त *चेत* ।
अत्यन्त सौम्य कवि लेखक हुन् सचेत ॥
(६१)

बेछन्द छन् तर सधैँभरि छन्द लेख्छन् ।
जाज्ज्वल्य अग्निसरि छन् तर साम्य देख्छन् ॥
नेता भएर पनि भावुक काव्य लेख्छन् ।
यी *रामचन्द्र* कवि सुन्दर विश्व देख्छन् ।
(६२)

बेछन्दकार कवि ***पुष्कर*** खूब लेख्छन् ।
अश्लील छैन सब सुन्दर सौम्य देख्छन् ॥
कौडा दिएर उपमा रतिधर्म छर्छन् ।
अत्यन्त तीक्ष्ण कवि हुन् सब कर्म गर्छन् ॥
(६३)

जङ्गी स्वभाव छ र ती गुरु गर्विला छन् ।
बेछन्दका कवि भए पनि फुर्तिला छन् ॥
सङ्क्षिप्त छन् जति भए पनि ती सकार्छन् ।
जाज्ज्वल्य छन् ***दिवस*** हुन् रजनी लघार्छन् ॥
(६४)

लेख्छन् निरन्तर निकै नगरी ढिलाइ ।
उत्कृष्ट काव्य कविता सरिता बिदाइ ॥
हुन् तीक्ष्ण आशुकवि कर्मठ नित्य बन्छन् ।
लेख्छन् ***रमेश*** जति जे सब कण्ठ भन्छन् ॥
(६५)

अत्यन्त दुःख मिहिनेत गरेर पैले ।
उठ्तै गए कवि समीक्षक भै क्रमैले ॥
हिँड्थे परिश्रम गरी कृति धेर लेख्थे ।
शिक्षाप्रसारतिर नै ***घट*** अर्थ देख्थे ॥
(६६)

अत्यन्त छन् कुशल ती गुरुकार्य गर्छन् ।
दिन्छन् सुसम्मति सबैतिर भाव छर्छन् ॥
विद्वान् समीक्षक विहङ्गम देख्न सक्छन् ।
हुन् ***वासुदेव*** मनमाफिक लेख्न सक्छन् ॥
(६७)

साझा थिए अघि उनी समभाव राख्ने ।
बानी थियो सरस सुन्दर भाव चाख्ने ॥
सारै सुरम्य कविता अनि गीत लेख्छन् ।
यी ***क्षेत्र*** हुन् प्रकृति यो सब सौम्य देख्छन् ॥
(६८)

ती ***मोदनाथ*** कवि हुन् नवकाव्य लेख्ने ।
मन्त्री बने पनि सधैँ पछिसम्म देख्ने ॥
भो अर्थ लाभ यश मानवकाव्य लेखी ।
यी गौँथली सरह छन् खुस साम्य देखी ॥
(६९)

यी क्रान्तिकी समयकी जनकी पुजारी ।
हुन् काव्यकी सुमन केशवकी कुमारी ॥
लेख्छिन् सुरम्य कविता नव भाव हाली ।
यी हुन् सदैव नव ***कुन्दन*** भाग्यशाली ॥
(७०)

लेख्छन् सुरम्य कविता कवि यो धरामा ।
राम्रो भए सफल प्राकृत पोखरामा ॥
गर्छन् प्रयोग बहुधा कवि सौम्य छन्द ।
सङ्क्षिप्त छन् मधुर छन् प्रिय छन् ***मुकुन्द*** ॥
(७१)

सङ्घर्षशील चतुर र फरासिला छन् ।
***पीताम्बरै*** सरासिला गतिला भला छन् ॥
दिन्छन् सधैँभरि यिनी मन शालिनीमा ।
लेख्छन् सुरम्य कविता तर मालिनीमा ॥
(७२)

विद्वान् विशिष्ट कवि हुन् सबतर्फ देख्छन् ।
छन् युक्त वारिधि उनी गुरुकाव्य लेख्छन् ॥
साहित्य सार्थक भयो अब सत्य पाई ।
छन् शान्त सौम्य कवि ***माधव*** भट्टराई ॥
(७३)

ज्यादै सुरम्य ***पुरुषोत्तम*** काव्यकार ।
अत्यन्त भावुक थिए कवि गीतकार ॥
सर्कारको सचिवमा रहँदै बहाल ।
छोडेर ती पर भए सब छौँ बिहाल ॥
(७४)

लेख्छन् कथा र कविता नवभावसाथ ।
छन् साधनारत अझै पनि फूर्तिसाथ ॥
छन् साहसी सहज जे पनि आँट्न सक्छन् ।
जाज्ज्वल्य ती ***परशु*** हुन् सब काट्न सक्छन् ॥
(७५)

छानेर सद्‌विषय शुद्ध लिई विवेक ।
गर्छन् सुरम्य रचना कविता अनेक ॥
यी छन्दमा कुशल छन् लघु काव्य लेख्छन् ।
यी **श्याम** हुन् ***घन*** अगाडि छ सौम्य देख्छन् ॥
(७६)

हुन् बुद्धिमन्त कवि लेखक सिद्धहस्त ।
देख्छौँ निबन्ध कविता रचना प्रशस्त ॥
भाषा विचारतिरमा उनको छ काम ।
यी हुन् समीक्षक प्रबुद्ध ***नरेन्द्र*** नाम ॥
(७७)

उद्दाम छिन् सुमति  छिन् अनि साहसी छिन् ।
यी *वानिरा* मृदुमयी ममतामयी छिन् ॥
लेख्छिन् नवीन कविता नव रङ्ग घोली ।
खिच्छिन् सदैव मन हुङ्कृतिसाथ बोली ॥
(७८)

यी पद्यमा सहज सुन्दर काव्य लेख्छन् ।
यी पुत्र हुन् प्रकृतिका सब रम्य देख्छन् ॥
शालीन भावसित बन्दछ छन्द काबु ।
अत्यन्त नै मधुर छन् कवि *रामबाबु* ॥
(७९)

यी हुन् प्रसिद्ध कवि काव्य र गीत लेख्छन् ।
*दैवज्ञराज* अति सुन्दर विश्व देख्छन् ॥
लेख्छन् सुरम्य कविता मधुभाव घोली ।
लटचाउँछन् सहज यी मृदुवाक्य बोली ॥
(८०)

साहित्यमा मन दिएर पुगी हर्लँसी ।
घुम्छन् सुरम्य सपनासित गाउँबेसी ॥
साठी थुँगासहित सार्थक हुन्छ नाम ।
*राधे* अगाडि यिनको छ पछाडि *श्याम* ॥
(८१)

अत्यन्त नै सरस सुन्दर शब्द छानी ।
लेख्छन् सुरम्य कविता गुणदोष जानी ॥
पेशा छ शिक्षक सधैँ कवि हुन् विशेष ।
भन्छन् स्वयं विषम यी सम छन् *गणेश* ॥
(८२)

हुन् पत्रकार कवि *अच्युत* फुर्तिला छन् ।
गाँठे छ वाक्य मुखमा अति नै भला छन् ॥
अत्यन्त कर्मठ भई गुरु काम गर्छन् ।
राम्रो छ उन्नयन नित्य अगाडि सर्छन् ॥
(८३)

यी हुन् *प्रयाग* कवि सुन्दर नाम धारी ।
लेख्छन् सुरम्य कविता मुटु नै उघारी ॥
पेशा छ शिक्षण निरन्तर काम गर्छन् ।
राखेर जोशसँग होस अगाडि सर्छन् ॥
(८४)

नेपालमा गजल आज गरी सनाथ ।
लेख्छन् उनी गजल सुन्दर भावसाथ ॥
लेख्छन् नवीन कविता अति चाखिला छन् ।
यी *ज्ञानुवाकर* सदैव फरासिला छन् ॥
(८५)

आवाजमा छ मह भाव सधैँ छ नौलो ।
छन् छन्दमा कुशल काव्यकला सुनौलो ॥
साह्रै सुरम्य कविता कृति काव्य धेर ।
लेख्छन् सधैँ *भुवन* का हरि झैँ बनेर ॥
(८६)

यी हुन् नवीन कवि लेखक काव्यकार ।
वक्रोक्तिमा कुशल छन् अति होशियार ॥
हुन् छन्दका सतहका कवि भाग्यशाली ।
राम्रा सुधा *बमबहादुर* हुन् *जिताली* ॥
(८७)

यी वामका सबल लेखक हुन् ***ढकाल*** ।
मच्चाउँछन् कलम खूब गरी कमाल ॥
सारै जुझारु कवि लेखक हुन् अदम्य ।
यी ठान्दछन् सहज जे पनि बुद्धिगम्य ॥
(८८)

वाचाल छन् चतुर छन् कटुसत्य लेख्छन् ।
बन्छन् समीक्षक सधैँभरि दूर देख्छन् ॥
सङ्घर्षशील कवि हुन् गुरुकार्य गर्छन् ।
छन् ***कोष*** तीक्ष्ण अति नित्य अगाडि सर्छन् ।
(८९)

लाभा गुफा विविध सुन्दर नाम राखी ।
राखेर स्वच्छ मन आग्रह नै नराखी ॥
लेख्छन् सुरम्य कविता नलिई प्रमाद ।
ती हुन् ***महर्षि*** उपनाम हुने ***कणाद*** ॥
(९०)

यी जोशिला युवक हुन् नव काव्य लेख्छन् ।
बेछन्दमा रुचि छ जे पनि रम्य देख्छन् ॥
यी रङ्गमञ्चतिरमा पनि काम गर्छन् ।
खोली ***अशेष*** शुभ सौरभ नित्य छर्छन् ॥
(९१)

अत्यन्त रम्य कविता कवि लेख्न सक्छन् ।
***प्रह्लाद*** छन् चतुर ती सब देख्न सक्छन् ॥
राम्रो गला छ सजिलैसँग भन्न सक्छन् ।
लामो भविष्य छ समुन्नत बन्न सक्छन् ॥
(९२)

अत्यन्त झङ्कृत गला र कला समाई ।
राम्रो विधा गजलको लय गुन्गुनाई ॥
झुल्के यहाँ *सनत* सुन्दर काव्यकार ।
यी हुन् *कुमार* कुसुमाकरका कुमार ॥
(९३)

शास्त्रीय छन्दसँग भावुक भाव हाली ।
जल्ले दिए विविध काव्यहरू निकाली ॥
यी हुन् नवीन कवि सौष्ठव काव्यसूत्र ।
भन्छन् सबै *पवन* हुन् गुणराजपुत्र ॥
(९४)

अत्यन्त कर्मठ भईकन काम गर्छन् ।
लेख्छन् सुरम्य कविता शुभ नाम छर्छन् ॥
यी लेख्नमा कुशल सुन्दर गीत लेख्छन् ।
यी हुन् *दिनेश* रविझैँ सब साफ देख्छन् ॥
(९५)

सत्काव्यमा मन दिई *बलदेव* लेख्छन् ।
गर्छन् अदम्य रचना सब सम्म देख्छन् ॥
वाचाल छन् कटु कुरा पनि बोल्न सक्छन् ।
हुन् गाउँले चतुर छन् अति घोच्न सक्छन् ॥
(९६)

गर्छन् प्रशस्त रचना कविता र लेख ।
यी काव्यकार कवि हुन् अति छन् प्रलेख ॥
अत्यन्त जागरुक छन् श्रम धेर गर्छन् ।
*शैलेन्दु* हुन् सहज शीतल भाव छर्छन् ॥
(९७)

छिन् छन्दमा कुशल खूब कला छ राम्रो ।
यी हुन् *प्रभा* मृदुमयी र गला छ राम्रो ॥
जे लेख्तछिन् सरस सुन्दर भाव छर्छिन् ।
जे पढ्दछिन् सकलको मन मुग्ध गर्छिन् ॥
(९८)

यी *राम* हुन् अमित जोश र होस राख्छन् ।
शैली छ सुन्दर सधैँभरि माथि ताक्छन् ॥
यी हुन् नवीन कवि हो नवकाव्य साध्य ।
लाभा उगेल्न पनि तत्पर छन् असाध्य ॥
(९९)

ती छन्दमा कुशल सौष्टव भाव साथ ।
लेख्थिन् सुरम्य कविता अति चाख साथ ॥
जे लेख्तथिन् सकलको मुटुसम्म छुन्थ्यो ।
*ओमी* विना सकल को.क. अपूर्ण हुन्थ्यो ॥
(१००)

पूर्वाग्रहीपन दुराग्रह नै नराखी ।
लेखेँ समस्त कविमा समभाव राखी ॥
सम्पूर्ण लेख्नु अति दुष्कर काम हुन्छ ।
सारांशमा सकल अन्तरभाव हुन्छ ॥

यो काव्यको शतक हो कविवन्दना हो ।
सङ्क्षिप्त सौम्य कवितामय अर्चना हो ॥
शब्दोपहार छ समर्पण जानिलेऊ ।
हे काव्यका रसिक हो ! अझ काव्य देऊ ॥



# कविशतकमा परेका कविहरू

१. आदिकवि श्रीभानुभक्त आचार्य (१८७१–१९२५)
२. युवाकवि श्रीमोतीराम भट्ट (१९२३–१९५३)
३. साहित्यभूषण श्रीकुलचन्द्र गौतम (१९३२–२०१५)
४. कविशिरोमणि श्रीलेखनाथ पौड्याल (१९४१–२०२२)
५. पण्डितराज श्रीसोमनाथ सिग्द्याल (१९४१–२०२९)
६. श्रीप्रेमप्रसाद भट्टराई (१९४९–२०१२)
७. श्रीधरणीधर कोइराला (१९४९–२०३६)
८. नाट्यसम्राट् श्रीबालकृष्ण सम (१९५९–२०३८)
९. श्रीनरनाथ शर्मा आचार्य (१९६२–१९४५)
१०. योगी श्रीनरहरिनाथ (१९६५–२०५९)
११. महाकवि श्रीलक्ष्मीप्रसाद देवकोटा (१९६६–२०१६)
१२. श्रीभीमनिधि तिवारी (१९६८–२०३०)
१३. श्रीसिद्धिचरण श्रेष्ठ (१९६९–२०४९)
१४. श्रीऋषभदेव शर्मा (१९७०–२०४७)
१५. श्रीनयराज पन्त (१९७०–२०५९)
१६. श्रीभवानी भिक्षु (१९७१–२०३८)
१७. श्रीकेदारमान व्यथित (१९७१–२०५५)
१८. श्रीविश्वेश्वरप्रसाद कोइराला (१९७२–२०३९)
१९. श्रीवासुदेव लुइँटेल (१९७४–२०६३)
२०. श्रीगोपालप्रसाद रिमाल (१९७५–२०३०)

| | | |
|---|---|---|
| २१. | श्रीकृष्णप्रसाद शर्मा घिमिरे | (१९७६–२०४९) |
| २२. | राष्ट्रकवि श्रीमाधवप्रसाद घिमिरे | (१९७६) |
| २३. | श्रीकेशवराज पिँडाली | (१९७७–२०५५) |
| २४. | श्रीप्रेमराजेश्वरी थापा | (१९७८–२०५८) |
| २५. | श्रीफणीन्द्रराज खेताला | (१९७९–२०६७) |
| २६. | श्रीहरिहर शास्त्री | (१९८०–२०३४) |
| २७. | जनकविकेशरी श्रीधर्मराज थापा | (१९८१) |
| २८. | श्रीश्यामदास वैष्णव | (१९८१) |
| २९. | श्रीविजयबहादुर मल्ल | (१९८२–२०५६) |
| ३०. | श्रीभरतराज मन्थलीय | (१९८२–२०५९) |
| ३१. | श्रीमोहन कोइराला | (१९८३–२०६३) |
| ३२. | श्रीश्रीभद्र शर्मा खनाल | (१९८३–२०६५) |
| ३३. | श्रीवसन्तकुमार शर्मा नेपाल | (१९८४) |
| ३४. | श्रीरमेश विकल | (१९८५–२०६५) |
| ३५. | श्रीअगमसिंह गिरी | (१९८५–२०२७) |
| ३६. | श्रीकुलचन्द्र कोइराला | (१९८६–२०५०) |
| ३७. | श्रीभरतराज पन्त | (१९८६–२०६५) |
| ३८. | श्रीकमलमणि दीक्षित | (१९८६) |
| ३९. | श्रीनीरविक्रम प्यासी | (१९८८–२०४९) |
| ४०. | श्रीहेमचन्द्र शर्मा पोखरेल | (१९८८–२०५५) |
| ४१. | श्रीसुन्दरप्रसाद दुःखी | (१९८८) |
| ४२. | श्रीलक्ष्मण लोहनी | (१९९०–२०६८) |
| ४३. | श्रीपूर्णप्रकाश नेपाल ‘यात्री’ | (१९९१) |

४४. श्रीभूपी शेरचन (१९९२–२०४६)
४५. श्रीप्रेमविनोद नन्दन (१९९२)
४६. श्रीहरिभक्त कटुवाल (१९९२–२०३७)
४७. श्रीदुर्गाप्रसाद भण्डारी (१९९३)
४८. श्रीआनन्ददेव भट्ट (१९९३)
४९. श्रीभानुभक्त पोखरेल (१९९३)
५०. श्रीभैरव अर्याल (१९९३–२०३३)
५१. श्रीशिवगोपाल रिसाल (१९९४)
५२. श्रीईश्वरवल्लभ (१९९३–२०६४)
५३. श्रीखेमराज केशवशरण (१९९४)
५४. श्रीवासुशशी वैद्य (१९९४–२०४९)
५५. श्रीकञ्चन पुडासैनी (१९९४)
५६. श्रीहेमराज ज्ञवाली (१९९५)
५७. श्रीओमवीर सिंह बस्नेत (१९९५)
५८. श्रीकालीप्रसाद रिजाल (१९९६)
५९. श्रीतिलविक्रम नेवाङ (वैरागी काइँला) (१९९६)
६०. श्रीमेदिनीनाथ सुवेदी (१९९७)
६१. श्रीचेतबहादुर कुँवर (१९९७)
६२. श्रीरामचन्द्र भट्टराई (१९९८)
६३. श्रीपुष्कर लोहनी (१९९८)
६४. श्रीतुलसी दिवस (१९९८)
६५. श्रीरमेश खकुरेल (१९९९)
६६. श्रीघटराज भट्टराई (१९९९–२०६३)

| | | |
|---|---|---|
| ६७. | श्रीवासुदेव त्रिपाठी | (१९९९) |
| ६८. | श्रीक्षेत्रप्रताप अधिकारी | (१९९९) |
| ६९. | श्रीमोदनाथ प्रश्रित | (१९९९) |
| ७०. | श्रीकुन्दन शर्मा | (१९९९) |
| ७१. | श्रीमुकुन्दशरण उपाध्याय | (२०००) |
| ७२. | श्रीपीताम्बर शर्मा दाहाल | (२०००) |
| ७३. | श्रीमाधवप्रसाद भट्टराई | (२०००) |
| ७४. | श्रीपुरुषोत्तम भट्टराई | (२०००–२०५४) |
| ७५. | श्रीपरशु प्रधान | (२०००) |
| ७६. | श्रीघनश्याम कँडेल | (२००२) |
| ७७. | श्रीनरेन्द्र चापागाई | (२००३–२०६८) |
| ७८. | श्रीवानिरा गिरी | (२००३) |
| ७९. | श्रीरामबाबु सुवेदी | (२००४) |
| ८०. | श्रीदैवज्ञराज न्यौपाने | (२००४) |
| ८१. | श्रीराधेश्याम भट्टराई | (२००६) |
| ८२. | श्रीगणेश मजगैयाँ ‘विषम’ | (२००६) |
| ८३. | श्रीअच्युतरमण अधिकारी | (२००८) |
| ८४. | श्रीप्रयागराज वासिष्ठ | (२००९) |
| ८५. | श्रीज्ञानुवाकर पौडेल | (२००९) |
| ८६. | श्रीभुवनहरि सिग्देल | (२००९) |
| ८७. | श्रीबमबहादुर थापा जिताली | (२०१०) |
| ८८. | श्रीनारायण ढकाल | (२०१०) |
| ८९. | श्रीकोषराज न्यौपाने | (२०११) |

| | | |
|---|---|---|
| ९०. | श्रीकणाद महर्षि | (२०११) |
| ९१. | श्रीअषेश मल्ल | (२०११) |
| ९२. | श्रीप्रह्लाद पोख्रेल | (२०१४) |
| ९३. | श्रीसनतकुमार वस्ती | (२०१५) |
| ९४. | श्रीपवनकुमार खनाल | (२०१६) |
| ९५. | श्रीदिनेश अधिकारी | (२०१६) |
| ९६. | श्रीबलदेव अधिकारी ‘गाउँले’ | (२०१८) |
| ९७. | श्रीशैलेन्दुप्रकाश नेपाल | (२०१८) |
| ९८. | श्रीप्रभा भट्टराई | (२०२२) |
| ९९. | श्रीरामप्रसाद ज्ञवाली | (२०२४) |
| १००. | श्रीओमी शर्मा | (२०२५–२०६७) |



# लेखकका प्रकाशित ग्रन्थहरू

१. उसैको लागि एक अध्ययन (प्रकाशक – श्रीमुकुन्दशंशेर थापा) – २०२६
२. ऋतुमन्थन, समीक्षात्मकग्रन्थ (प्रकाशिका श्रीमती इन्दिरा भट्टराई) – २०४४
३. सिर्जनाका फूलहरू, कवितासङ्ग्रह (प्रकशकहरू – श्रीसञ्जीवकुमार भट्टराई, श्रीसतीशकुमार भट्टराई र श्रीसगुनकुमार भट्टराई) – २०५१
४. बहादुर शाह, खण्डकाव्य (प्रकाशक – श्रीसतीशकुमार भट्टराई) – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य (प्रकाशिका श्रीमती इन्दिरा भट्टराई) – २०५२
६. गीत तथा भजनहरू (प्रकाशक – श्रीसञ्जीवकुमार भट्टराई) – २०५२
७. अमरसिंहको चिट्ठी, खण्डकाव्य (प्रकाशक – ने.रा.प्र.प्र.) – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य (प्रकाशिका श्रीमती इन्दिरा भट्टराई) – २०५३
९. विविधयात्रा, कवितासङ्ग्रह (प्रकशक – साझाप्रकाशन) – २०५५
१०. यात्रैयात्रा, कवितासङ्ग्रह (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०५८
११. पत्रैपत्र, कवितासङ्ग्रह (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०५९
१२. पृथ्वीविजय, काव्य (प्रकाशक श्रीसतीशकुमार भट्टराई) – २०६२
१३. ज्ञान र भक्ति (प्रकाशक – श्रीराजर्षिजनकस्मृतिकोष) – २०६३
१४. रासपञ्चाध्यायी (प्रकाशक – श्रीराजर्षिजनकस्मृतिकोष) – २०६४
१५. तीर्थहरूको यात्रावृत्तान्त(प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०६४
१६. ब्रह्मसाक्षात्कार (प्रकाशक – श्रीराजर्षिजनकस्मृतिकोष) – २०६५
१७. उपनिषत्सार (प्रकाशक – श्रीराजर्षिजनकस्मृतिकोष) – २०६७
१८. ब्रह्मसूत्रसार (प्रकाशक – श्रीराजर्षिजनकस्मृतिकोष) – २०६७
१९. अनुस्मृति (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०६७
२०. मणिरत्नमालाको अनुवाद (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०६७
२१. वन्दना (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०६८
२२. ब्रह्मसूत्रको अध्यास र चतुसूत्री (प्रकाशक – रत्नपुस्तकभण्डार) – २०६८
२३. वेदान्तपरिभाषासार (प्रकाशक – रत्नपुस्तकभण्डार) – २०६८
२४. कविशतक (प्रकाशिका – श्रीमती इन्दिरा भट्टराई) – २०६८